# इतिहास

# नेपाल भाषामा हास्यव्यङ्ग्य काव्यपरम्पराको इतिहास

डा. जनकलाल वैद्य

वर्ष ३१ अङ्क ४ : पूर्णाङ्क ३३९ : भदौ २०५४ Vol. 31: No. 4 :Aug -Sept. 1997

नेपालका साहित्य-सम्पन्न भाषाहरूमा नेपालभाषा पनि एक साहित्य सम्पन्न भाषा हो । अहिले सम्मको अनुसन्धान अध्ययनबाट यस भाषामा विक्रमीय संवत्सर अनुसारको सत्रौं शताब्दीदेखि अद्यापि यस भाषामा हास्य-व्यङ्ग्य काव्य विधा प्रवाहित भइरहेको पाइन्छ । यस भाषामा हास्य व्यङ्ग्यात्मक गीति काव्यलाई **कथा ल्हाय** मे भन्नेगरेको देखिन्छ । **कथा ल्हाय मे** को तात्पर्य लोक चरित्रमा बेला बखत देखा परेका चरित्र व्यवहारका, रीति-नीतिका, धर्म-संस्कृतिका विकृति, दोष, त्रुटि, कमजोरी आदिलाई सुधार्ने हेतुले आलोचनात्मक टिप्पणी सहित छेड हान्ने र हंसी उडाउने गीती काव्य हो भन्ने बुझिन्छ । ने.सं. ६९१-६९४ अर्थात् वि.सं. १६२८-१६३१ का कविताहरूका भाव, ललितपुरका राजा श्रीनिवास मल्लकालीन **यलय् बाथ:** भसन नाटकमा परिलक्षित उद्देश्यबाट र ने.सं. ८६४ / वि.सं. १८०१ को कथा **ल्हाय मेका** पाठमा ठाउँठाउँमा उल्लेखित **'लोकया चरित्र खँ ल्हाय' 'ध्व कलया मिसातोस चरित्र खँ ल्हाय'** (अर्थात् कलि युगका आइमाईका चरित्र बारे कुरा गर्छ), **'थिथि मन ख ल्हाय'** र **'इति लोक चरित्र गीत'** (समाप्ति वाक्य) उल्लेखित पाठका तथ्यबाट यो कुरा प्रमाणित भएका छन् । पछि पछि त गीतको शीर्षक र गीतमा प्रयुक्त लय (राग) कुनै कुनै गीतको सिरानीमा **'कथा ल्हाय मे'** र **'राग कथा ल्हाय'** लेख्ने र भन्ने चलन समेत पनि देखिएको छ । फेरि, नेपालको धर्म संस्कृतिद्वारा निर्दिष्ट थितिरीति अनुसार यस भाषाको हास्य व्यङ्ग्य गीत गाएर गाउने विशिष्ट चाड उत्सव **'गाईजात्रा', 'साया:'** अर्थात् **'गाईजात्रा'** भएकोले त्यसैको आधारमा पनि यस भाषाको हास्य व्यङ्ग्य गीतको शीर्षक र त्यसमा प्रयुक्त लय विशेषलाई **'सायतया मे' (पुलांगु मे मुना,** ने.सं. ११०३ : वि.सं. २०३९, पृ. ३२१) भन्ने गरेको पनि देखिन्छ । यसभाषाका यी गीतहरूबाट नेवार धर्मसंस्कृतिमा हास्य व्यङ्ग्य गीति काव्यगाईजात्रादेखि इन्द्रजात्रा उत्सव चाड पर्व विशेषमा नै सिर्जना रचना गरी गाउने नेवारहरूको आफ्नै किसिमको सिर्जना-मूलक सांस्कृतिक-विशेषतायुक्त मनोरञ्जन हो भन्ने ज्ञात हुन आउँछ । यसरी धर्मसंस्कृति-प्रधान नेवार समाजले हास्यव्यङ्ग्य गीत **'बेला निं कुबेला बजि नयेला'** भनेझैं जहिले पायो त्यो बेलामा गाउन नदिइकन गाईजात्रादेखि इन्द्रजात्रा चाड पर्व उत्सवको समयावधिभित्र पारेर त्यस्ता हास्य-व्यङ्ग्य गीत रचेर गाउने, मनोरञ्जन गर्ने धार्मिक, सांस्कृतिक र व्यावहारिक अनुशासन-पालनाको हिसाबले सीमाङ्कन गरिदिए जस्तो लाग्छ । स्मरण रहोस्, उक्त समयावधि भित्रको मौसम प्राकृतिक वातावरण एवं रोपाइं गोडमेल जस्ता खेतीपातीको कामबाट किसानहरूलाई फुर्सत मिल्ने हुँदा अनेक दृष्टिले हास्य-व्यङ्ग्य गीति काव्यद्वारा मनोरञ्जन गर्नलाई अनुकूल पनि हुन्छ । झन् त्यस समयको रमणीय प्राकृतिक वातावरणमा हास्य-व्यङ्ग्य गीत गाउँदा नाच्दा बजाइने ताल बाजा मादलको (नेवारीमा मग: खिंचा) सुमधुर आवाजको प्रभाव र रसास्वादनको विशिष्ट आनन्द अनुभूति प्राप्ति हुन्छ ।

यसो ता असार साउन महिनामा धान रोप्ने बेलामा गाइने **सिन्हाज्या** नामक नेवारी लोकलयबद्ध गीतमा पनि हास्य व्यङ्ग्यको पुट हुन्छ नै । **सिन्हाज्या** नामक असारे गीतदेखि हास्यव्यङ्ग्य गीतद्वारा मनोविनोद गर्ने र छेडछाड गर्ने कार्यकलापको पूर्वरङ्गको आभास हुन थाल्छ । वर्षभरिलाई यथेष्ट पुग्ने गरी नेपालको मुख्य अनाज धान रोप्ने जस्तो देशव्यापी काममा युवायुवती खेतालाहरूलाई आकृष्ट गराई धान रोप्ने खेत खेतमा जमघट गराउने प्रमुख साधन नै **सिन्हाज्यामे** अर्थात् असारेगीत हुन् । त्यसमा शृङ्गारिक मनोविनोद र समाजमा मानिसले भोग्नुपरेका दु:ख-पिरको गुनासो पनि अभिव्यक्त भएका हुन्छन् । त्यसबेलाका सिद्धहस्त,



एक तल्सिङ्ले आफ्नै खेत कमाउने मोहीकी स्त्रीको रूप यौवनमा आसक्त भएर डर धम्की देखाईदिन दहाडै लसपस गरेको कार्यको पोल खोलिदिएको छ । ती स्त्री रोपाहारहरूलाई खाजा ख्वाउन खेतमा पुग्दा तिनको लोग्नेले अबेर आउनाको कारण सोध्दा तिनले "घरमा 'त्वायभत' अर्थात् मितज्यू आएकोले उसैलाई पाहुना सत्कार गर्न परेकोले आउन ढिलो भएको" भनी खेतमा सबैका सामुन्ने स्पष्टीकरण दिन्छिन् ।

हास्यव्यङ्ग्य अङ्क

प्रतिभाशाली, संवेदनशील कविहरूले हास्यव्यङ्ग्यको गीतीकाव्य सिर्जना रचना गर्नलाई सुरक्षित, सक्रिय र प्रभावशाली माध्यम '**सिन्हाज्या मे**' लयबद्ध गीतलाई प्रयोग गर्ने गर्थे ।

यस्तै धार्मिक, सांस्कृतिक, सामाजिक, प्राकृतिक र व्यावहारिक आधार पृष्ठभूमिमा सिर्जित- रचित, गुञ्जित र प्रवाहित हुँदै परम्परागत धरोहर स्वरूप अद्यापिसम्म जीवन्त रहँदै आएको हास्य व्यङ्ग्य गीती काव्यविधाले आधुनिक नेपाली समाजमा भनौं या नेपालको साहित्य जगत्मा अझ बढी लोकप्रिय एवं समाज र युगलाई सही मार्ग निर्देशन गर्न सक्षम सशक्त साहित्यिक विधा हुन पुगेको छ । हाल वर्षेनि गाईजात्रा चाडको दिनभन्दा एकहप्ता अघिदेखि नै पत्रपत्रिकाहरूले **गाईजात्रा अङ्क** प्रकाशित गर्ने गर्छन् । साहित्यिक संस्था संस्थानहरूबाट गाईजात्राका समयतिर व्यङ्ग्य चित्र प्रदर्शनी र हास्य व्यङ्ग्यका (कविता प्रहसन आदि) कार्यक्रम आयोजना गर्ने गर्छन् । वासुदेव लुइँटेल (भूतको भिनाजु नामले सुपरिचित)को हास्य-व्यङ्ग्य साहित्य क्षेत्रमा योगदान पुऱ्याउने विशिष्ट साहित्यकारको सम्मान गर्न रु. एकलाखको पुरस्कार दिने अक्षय कोष गुठी संस्थापना हुनु र **मधुपर्क** मासिक पत्रिकाले २०५४ भदौ अङ्कलाई **हास्य व्यङ्ग्य** विशेषाङ्क रूपमा प्रकाशित गर्ने जस्ता स्तुत्य कदमले हास्य व्यङ्ग्य विधाले नेपाली साहित्यमा सम्मानित स्थान र प्रश्रय पाउँदै यस विधाको समुन्नति हुने पूर्वलक्षण संकेत गर्छ ।

अब यस लेखको मूल विषयतिर लागौं । प्रस्तुत लेखमा विक्रमीय सत्रौं शताब्दीदेखि बीसौं शताब्दीभित्र अर्थात् वि.सं. १६२८ देखि १९७४ भित्रका मात्र हास्यव्यङ्ग्य गीती कविता, प्रहसन नाटक, छायावादी शैलीका व्यङ्ग्य गीती कविता, सिन्हाज्या लयबद्ध कथागीत मध्ये केही प्रमुख रचना कृतिहरू छानेर चर्चा गरिन्छ । रचना-कालक्रमानुसार नेपालभाषाका हास्य व्यङ्ग्य गीती कविता, **यलय बा:ख** प्रहसन नाटकका हास्य व्यङ्ग्य, सिन्हाज्या मे गीत एवं कथा-गीतका हास्य व्यङ्ग्य र सायात या मे भित्रका हास्य व्यङ्ग्यका केही चर्चा यहाँ गरिन्छ :-

१. ने.सं. ६९१-६९४ वि.सं. १६२८-१६३१ तिरका ललितपुरका संयुक्त शासकराजाहरू- तीन दाजुभाइ- नरसिंह देव, पुरन्दर सिंह देव र उद्धव सिंह देवका समकालिक स्थानीय एक अज्ञात विद्वत् कविले इन्द्रजात्रा उत्सव विशेषमा सामूहिक भजन रूपमा गाउनलाई रचिदिएका वीर प्रशस्ति गीतहरूमा केही व्यङ्ग्यात्मक उक्ति परेका छन् । त्यसमा मुख्यत: तत्कालीन समाजमा देखापरिरहेका ईर्ष्यावाद, कृतघ्नता (वैद्य र व्यापारी जस्ता समाजसेवीहरूका सेवा गुण कदर नगर्ने कृतघ्नता), आफूलाई जन्म दिने आमाबाबुको आदर



लेखक

सम्मान नगर्ने, विश्वासघात गर्ने छिमेकी राज्यको कुकृत्य, राजदरबारभित्र चुक्ली गरी राजमाता र उत्तराधिकारी राजकुमारहरूबीच कलह-बीजारोपण गर्ने छुल्याहाहरू विरुद्ध व्यङ्ग्य प्रहार गरेका छन् । कविले नीति शास्त्र, दर्शन शास्त्र र प्राकृतिक नियम आदि उदाहरण प्रस्तुत गर्दै सुधारात्मक उपदेशात्मक व्यङ्ग्य अभिव्यक्त गरेका छन् -

**नेपाल राजस बब या रे**
**मखोन सास्य असत्यया सत्यानास जुस्य बरोयो ॥**

(अर्थात् नेपाल उपत्यकाका राज्यमा भलो चिताएर सद्व्यवहार सहायता दिन खोज्ने छिमेकी राज्यका विरुद्ध असती वैगुनी भई धोका विश्वास घात गर्नेहरूको सत्यानास भइ छोडेछन् ।)

'धर्म, अर्थ, कम, मोक्ष प्राप्ति आशाले व्यापार पेसामा लागेका व्यापारीलाई बन्धनमा पार्छ । कसैमा पनि यो गर्नु हुन्छ यो गर्नु हुँदैन भन्ने विवेक विचार छैन । आफ्नो शरणमा आएकालाई पनि शत्रु सरह व्यवहार गरिन्छ । कसैलाई रोग लाग्दा वैद्यले जाँची औषध-उपचार गरी निको तुल्याउँछ तर रोगबाट छुट्कारा पाउने व्यक्तिले आफ्नो भाग्यले बाँचेको भन्ठानी वैद्यको, गुण बिर्सिदिन्छ । उपकारीलाई जस दिने कसैमा विवेक रहेन । दुष्मनहरूले अनेक कुरा लगाई छुल्याई आमा छोरा बीच फाटो ल्याइदियो, झेल खेल गऱ्यो । बाबु र छोरामा तथा नाता-बन्धुहरूमा परस्पर मेल मिलाप भई उन्नति भएको देख्ता ईर्ष्यालु नहुनु किनकि ईर्ष्याले अन्तत: सर्वनाश गर्छ । जस्तो वन जङ्गल नहुँदा सिंहको विनाश हुन्छ, सिंहादि जीव जन्तु नभएमा वन जङ्गलको शोभा हुँदैन । ... पहिलेका मानिसहरू आफ्ना मान्यजन- आमाबाबुलाई चन्द्र सूर्य सरह मानेर आदर गर्थे तर अहिलेकाहरूले उल्टो आमाबाबुलाई अपहेलना गर्न थाले । त्यसो गर्नु हुँदैन ।'

उपर्युक्त गीतमा उपदेशात्मकता बढी देखिन्छ । त्यसमा भएको व्यङ्ग्य त्यतिको चर्को होइन । बरु शिष्ट, सभ्य र कोमल देखिन्छ । गीतका समाप्ति अंशमा मात्र "इन्द्र जात्रा तपाईं हामीले रमाइलो गर्नको लागि टोलटोलमा गई हेर्ने हो, एकले अर्कोलाई हास परिहास उपहास नगरौं" भनी भनिएकाले त्यस जमानामा इन्द्रजात्राको बेला हास परिहास उपहास गर्ने व्यवहारले चर्को र अस्वस्थ रूप लिन लागेको देखेरकविले त्यस्ता व्यवहार विकृति र इन्द्रजात्रा जस्तो उत्सव बेलामा रङ्गमा भङ्ग नहोस् भनेर नियन्त्रण गर्न खोजेको बुझिन्छ । त्यसमा व्यङ्ग्य सान्दर्भिक प्रसङ्ग रूपमा रहेको देखिन्छ ।

भक्तपुरका राजा जगज्ज्योति मल्लद्वारा (ने.सं. ७३३-७५६/ वि.सं. १६७०-१६९३) निर्दिष्ट भनी गीतका समाप्ति वाक्यमा नाम उल्लेख भएको एक अभिलेख ग्रन्थ **नानार्थ पञ्च दश गीत** राष्ट्रिय अभिलेखालयमा (लगत नं प्र. ३३८, छवि चित्र नं. बी २८६/९ सुरक्षित रहेको छ । त्यसमा भएक

न्मा १५ गीत रचनाहरूमध्ये चार न रचनाहरू (नं. ९, १०, १३ र १४) हास्य व्यङ्ग्य प्रधान उपदेशात्मक गीत रचना हुन् । तिनीहरूलाई नेपालभाषाको अहिले सम्ममा पत्ता लागेका विशुद्ध हास्य व्यङ्ग्य गीति काव्यहरूमध्ये जेठो मान्न सकिन्छ । ती रचनाहरूमा हास्य र व्यङ्ग्य सन्तुलित रूपमा रहेका देखिन्छन् । यस अभिलेख ग्रन्थकमा केही उल्लेख्य एवं स्मरणीय उद्धरण छन् जसका भाव यस्ता छन् -

"जान्ने बुझ्ने मैं हुँ भन्ने अभिमानीहरू घरै पिच्छे बढ्दै छन् । देश-विदेशमा जहाँतहीं कुराले ठिक्क गर्ने व्यवहारले दिक्क पार्नेहरूकै बोलबाला छ । एक थोक एक थोक चिताउँछौं, परिपञ्च अर्कै हुँदो रहेछ । मनले चिताए जस्तो राम्रो काम केही हुँदो रहेनछ । कसैको पनि काम र कुरा मिल्दो रहेनछ । सबका सब धर्मविरोधी छन् । छुल्याउने र भाँडभैलो मच्चाउनेहरू मात्र धेरै बढे । सज्जनहरू दुर्लभ हुँदैछन् । एकले अर्कालाई ईर्ष्याद्वेष गर्छ । आ-आफ्नो पाप कर्मको कुफल यही जन्ममा आफैंले भोग्नु पर्ने चालै पाउँदैन । विवेक नभएकाहरूलाई मनको कुरा के सुनाऊँ म !"

दुर्जन जतन कपतिया मन, सेय परम कठीन ... इत्यादि ।

(अर्थात् कपटी दुर्जनका जतन र मनको कुरा जानि नसक्नु हुन्छ । तिनीहरू कसैलाई दुःख आपत् आइपर्दा हाँस्छन्, कसैको उन्नति देख्ता रुन्छन् । तिनीहरूका मन उतिनखेरि खिन्न हुने गर्छन् । अर्काको ज्यान खतरामा पार्ने कडा बोलिवचन बोल्न पनि तिनीहरू हिच्किचाउँदैनन् । गाईलाई जतिसुकै दुःख होस् पर्वाह नगरी कागले घाउमा ठुङ्छ, ठुङ्छ । जुकाले रगत सोसे झैं सोस्छ, सोस्छ । आफूलाई अजम्मरी ठानेर अधर्मी र निर्विवेकी भई कुकर्म गर्दै छ । मनले चिताए सरी केही कसरी आउने होइन यहाँ । याद गर यस्ता कुकर्मले बाबु बराज्यूको सम्पत्ति र सबै शाखा- सन्तानलाई विपत्तिको कारण बन्नेछ ।)

सामाजिक मानिसहरूको कृघ्नताले गर्दा व्यापारी, लमी, ज्यामी शिक्षक (गुरु) जस्ता समाज-सेवीहरू दयास्पद नाजुक स्थितिमा परेकाको मार्मिक चित्रण कविले यसरी गरेका छन् -

"बनज वाङान छुनों मचुव, लिहां क्याव छें बु चुव, ..." इत्यादि ।

(अर्थात् व्यापार (खेप व्यापार) गर्न जाँदा केही वस्तु बिकेन । आफ्नो घर खेत मात्र स्वाहा भयो । यस्तो छलपूर्ण व्यापार देखी चेत बाबा भएँ । जोइपोइ नअन्माइएसम्म लमीको खुसामद र मान गरिन्छ । बिहाको काम सकिएपछि लमीको गुण बिर्सिदिन्छ । यस्तो पो रहेछ लमी पेसा । काम अऱ्हाउनु पर्ने काम छउञ्जेल ज्यापूलाई काममा लगाउँछ । काम गरेपछि ज्याला नै नदिने । यस्तो पो हुँदो रहेछ । ज्यापू हुनु लाज लाग्छ । नजानेसम्म गुरुसँग टाँसिरहने, आफू केही जान्ने बुझ्ने भयो कि त शिष्यले गुरुको टुपी समाउँछ । यस्तो पेसामा लाग्नु लाजमर्दो ।)

उपर्युक्त दर्शन, नीति, सुधार-सन्देश युक्त परिहासात्मक व्यङ्ग्य गीतमा कविले तत्कालीन नेपाली समाजमा देखा परेका विकृति तथा सम्बद्ध उद्योग पेसा, व्यापार गर्नलाई आवश्यक पर्ने सीप र शैक्षिक योग्यता विना औ सुहाउँदो आचरण विना बाह्य पहिरन र आडम्बरद्वारा मात्र समाजमा धनी एवं प्रतिष्ठित व्यक्ति हुन खोज्नेहरूको दुर्गति भएकोले धज्जी उडाइएको छ ।

श्रीनिवास मल्लले (ने.सं. ७४७-८०७/वि.सं. १६८४-१७४४) आफ्नो एक रचनामा सांसारिक जीवनमा विधाताले मानिसको चरित्र परीक्षा गर्न विसंगतिपूर्ण सांसारिक स्थिति उपस्थित गराइरहेकोको चेतना बोध गराउन र आ-आफ्नो चरित्र सुधार्ने बेला भयो भनी व्यङ्ग्योक्ति पूर्ण सन्देश त्यतिखेरै अभिव्यक्त गरेका थिए -

...

संपत्ति दओम्हया संतान हीन । परिवार दओम्हया अति तओ रीन ।
शनिजन पुरुखया तिरिजन अज्ञानी ।
लाल बाल अनारीया तिरि जा ज्ञानी

(अर्थात् धनीहरूका सन्तान धेरै नहुने, परिवार धेरै हुनेहरू भने ऋणमा चुर्लुम्म डुबिरहने हुन्छन् । ज्ञानी विद्वान्का स्त्री अज्ञानी, निर्धन र अज्ञानी पुरुषका लालाबाला र स्त्री खुबै जान्ने र चलाक हुँदैछन् ।)

उपर्युक्त जगज्ज्योति मल्ल र श्रीनिवास मल्लका समयका व्यङ्ग्य गीतमा तत्तत्कालीन मानव समाजमा देखा परिरहेका विकृति विसंगति एवं खस्किंदो आर्थिक र शैक्षिक स्तरको व्यङ्ग्यात्मक चित्र प्रस्तुत भएका छन् ।

भक्तपुरका कवि जगच्चन्द्र नामले प्रख्यात राजा जगत प्रकाश मल्लले (ने. सं. ७५९-७९३/ वि.सं. १६९६-१७३०) आफ्नो राज्य भक्तपुरमा तत्कालीन ललितपुरका राजा श्रीनिवास मल्लको साथ लिई भक्तपुरमा आक्रमण गर्ने त्यहाँको कला कृति लुटेर लैजाने, अन्न अनाज लुटेर लाने, भक्तपुरका इलाका जंगल फाँडेर त्यहाँका जीव ज़न्तुलाई विचल्ली पार्ने र चारैतिर घेरेर नाकाबन्दी गर्ने आफ्नो वैरी पक्षको नाम उल्लेख नगरिकन राजाको अनैतिक कुकृत्यप्रति यसरी छेड हानेका छन्-

गुलृनङ नृपपनि धरमस चित्त
तव गुलृनङ पाप यात आव' इत्यादि ।

(अर्थात् कोही राजा धर्मकीर्ति राख्ने मन कामना भएका हुन्छन् त कोही पाप कर्म गर्ने हुन्छन् । त्यस्ता पापी राजाले परलोकमा कसरी मोक्ष पाउँदा होलान् ! अर्काका स्त्री हरण गरेर र अर्काका धन सम्पत्ति हरेर मोज गऱ्यो । कस्तो आत्मविश्वासले त्यस्ता कुकृत्य गरेका हुन् ! न्याय इन्साफ गर्दा त्यस्ताले दण्ड सजाय भोग्नै नपर्ने कि क्या हो ! ढुङ्गेधारा, कुवा, इनार, पाटी, पुल सब ध्वस्त पारे । त्यस पापीले गर्दा हामीले दुःख कष्ट भोग्ने भयौं । देवपाटनका श्लेष्मान्तक वनमा रहने वानरहरूले पनि निकै दुःख पाए कान्तिपुरका पापी राजाले जङ्गल फाँडेर फल टिपेर लगेकाले ।)

राजा श्रीनिवास मल्लकै कृतित्व मानिएको **"यलय बा:थ:"** प्रहसन नाटक (कात्तिक नाच अन्तर्गत सात दिनसम्म वर्षेनि पाटनको प्रख्यात कार्तिक नाच डबुलीमा मञ्चन हुने) धेरै लोक प्रख्यात हास्य-व्यङ्ग्यप्रधान अमर कीर्ति हो । नेपाल भाषाका हास्यव्यङ्ग्य गीति काव्य कृति कति विस्मृतिको गर्भमा विलीन भइसके, कति त अभिलेख ग्रन्थहरू भित्र थन्किएर ओझेलमा परेका होलान् । नेपालभाषाको अहिलेसम्मको जेठो मौलिक हास्य व्यङ्ग्य प्रहसन सिर्जना **'यलय बा:थ:'** अद्यापि सम्म पनि अभिनय प्रदर्शित हुँदै रहेकाले ज्यूँदै छन्

भन्न मिल्छ । तीन शताब्दीभन्दा बढी समयावधि पार गरी सकेर पनि यसमा निहित हास्य व्यङ्ग्यले सबै क्षेत्रका, सबै वर्गका, सबै पेसाका, के बाल-बालिका, के युवा-युवती के बूढा-बूढी सबका सबलाई मनोविनोद गराउन सक्षम छन्, सचेत पार्न सक्छन् । यस प्रहसन नाटकको मूल अभिलेख ग्रन्थ अहिले दुर्लभ भइसक्यो तापनि यसका प्रतिलिपि उतार पाटनको भीमसेन मन्दिरको दाछा भजन अभिलेख ग्रन्थ भित्र छरिएर केही संग्रहित रहेका छन्, केही **आशा सफू कुथी** मा सुरक्षित **घंठ सफूल** (रनिङ नं. २५६६) अभिलेख ग्रन्थमा छन् । स्व. चक्रधर शर्मा राजोपाध्याय (कार्तिक नाचका गुरु)ले आफूले सम्झन सके जति तीन अङ्क लेखिदिनुभएका पाठ अंश र निवर्तमान यलय बा:थ: प्रहसन नाटक मञ्चन कार्यमा संलग्न हरिमान श्रेष्ठले लेखि-दिनु भएका पाठलेखहरू **खेलु इता:** वार्षिक पत्रिकाको अङ्क ६-१५ मा प्रकाशित भइसकेका छन् । त्यस्तै लोक-साहित्य विद् द्वय- सत्यमोहन जोशीले यस प्रहसन नाटक बारेमा 'कार्तिक नाच भित्रको लोक नाटक' शीर्षकको आवरण लेख **मधुपर्क** (जेठ २०४८ को अङ्कमा) र केशरलाल श्रेष्ठले अंग्रेजीमा **'टेल्स अव थ्री ब्रदर्श'** भन्ने पुस्तक (सन् १९९४मा) प्रकाशित गराउनुभएको छ ।

यस प्रहसन नाटकको भूमिका खण्डमा ब्रह्मा, विष्णु र महेश्वर त्रिदेव स्वर्गबाट मर्त्यलोकमा लोक चरित्र हेर्न बुझ्न र आ-आफ्नै पनि चरित्र देखाउन यसै प्रहसन नाटकमा तीन ठट्यौला पात्रहरू गंदाजु, समादाजु र बा:थ: किजा नामक मनुष्य रूप धारण गरी अवतरित भएको भन्ने देखाइएको छ (यसको पूर्ण परिचय विवरण उपर्युक्त आवरण लेख **मधुपर्क** २०४८ जेठ, पृ.५-१२ मा हेर्नु होला) । यस प्रहसन नाटकबाट नेपालभाषाको हास्य व्यङ्ग्य प्रधान साहित्यिक कृतिको रसास्वादन गर्ने समयावधि कार्तिक महिनासम्म रहेको ज्ञात हुन आउँछ । यसमा हास्य-व्यङ्ग्य प्रधान प्रहसन नाटकमा हुनु पर्ने प्रायश: धेरै गुण विशेषता छन् । यसका ठट्यौला पात्रहरू गंदाजु, समां दाजु र बा:थ: किजाका भूमिका अभिनय गर्ने कलाकारहरूले लाउने मुकुण्डोको र भेषभूषा पहिरनको वैचित्र्य, संगीतका सुर ताल अनुसार हस्त मुद्रा र पद चालन अभिनय वैचित्र्य, पात्रहरूका संवादमा प्रत्युत्पन्नमति-बौद्धिक कुशलतापूर्ण वाक्चातुर्य, अभिनय प्रदर्शन वैचित्र्य, नाटकीय व्यङ्ग्य, काकु वक्रोक्ति, श्लेषयुक्त शब्द र वाक्यप्रयोग-वैचित्र्य र बाहुल्य (विशेषत: श्रृङ्गारिक रत्यात्मक हास्य रस उद्रेक गर्ने अर्थ र सामान्य अर्थ लाग्ने) नै यस प्रहसन नाटकमा प्रमुख विशेषता हुन् । "ल्यव:सिं मिसा" अर्थात् नाठो लिने स्त्री (यसको विस्तृत पाठ **खेलु इता:** अङ्क ७, ने.सं. ११०६, पृ. ६९-७८) मा हेर्नुस्) शीर्षकको प्रहसन नाटकमा नाठो लिने स्त्री र परस्त्री गमन गर्ने नाठोको धज्जी उडाइएको छ । यस प्रहसनका तीनै ठट्यौला पात्रहरू गं दाजु, समां दाजु र बा:थ: किजा आपसी सल्लाह पछि व्यापार गर्न देश परदेश घुम्दै फिर्दैमा रात परेकोले एक घरमा त्यसको घरपति दम्पतीलाई मामामाइजू साइनो परेको पुरानो कुरा संस्मरण गराउँदै प्रमाणित गर्दै वास बस्छन् । सोही रात घरपति चाहिं आफ्नो खेत हेरचाह गर्न गइराखेको मौका पारी उसकी स्वास्नी चाहिं आफ्नै घरमुनिको पसलेको पठ्ठो छोरो नाठो खेलाई रात बिताउन चाहेकी ती ठट्यौला पात्रहरूले चाल पाउँछन् । तिनीहरू चर्खा घुमाउँदै, कपास बटार्दै, धागोको लट्टी बनाउँदै नाठो दिइरहने स्त्रीलाई लक्ष्य गर्दै छेडछाडपूर्ण गीत गाउँछन्, रत्यात्मक हाउभाउ गरिरहन्छन् । यति हुँदा हुँदै रात बित्छ । झिसमिसे बिहानै खेतबाट फर्केको घरपतिले ढोका घच्घच्याउँछ । लोग्नेलाई ढोका खोल्न जानु अगावै ती स्त्रीले नाठोको अनुरोधमा उसलाई गुन्द्री भित्र लुकाई बेरेर एक कुनामा थन्क्याउँछिन् । घरपतिसँग बिदावारी भई जान लाग्दा घरपतिले ती ठट्यौला पात्रहरूलाई धेरै वर्षपछि मामाघरमा आएका भाञ्जा सम्झेर स्नेहपूर्वक केही वस्तु उपहार दिन चाहे । ठट्यौला पात्रहरूले पनि त्यही गुन्द्री मागी लैजान्छन् । ती स्त्री लोग्ने खेत गएको बेलामा नाठो खेलाई बसेकी पोल खुल्ने भयले चिन्तित हुँदै पसले कहाँ गई त्यो गुन्द्री ठट्यौला पात्रहरूबाट किनिदिन अनुरोध गरिन् । तिनको अनुरोध अनुसार पसलेले ३० 'दाम' तिरी त्यो गुन्द्री किनी दिंदा तिनी तत्क्षण आफ्नो र नाठोको इज्जत बचेकोमा आश्वस्त भइन् । उता, ती ठट्यौला पात्रहरूले भने मामामाइजू (घरपति दम्पती)को अनुग्रहबाट बेपार गर्न जाँदा बेपारबाट मुनाफा कमाउन सकेको खुसियालीमा भीमसेनको पूजा गरी भोज ख्वाउने बन्दोबस्त गर्न आए । मामामाइजूका नाताइष्टमित्रहरू निम्त्याए । पाहुनाहरूमध्ये राती आउने नाठो पनि उपस्थित भयो । उसको मुखेञ्जी नै ठट्यौला पात्रहरू मध्येका चलाक **बा:थ: किजा**ले छेडछाडपूर्ण केरकार र व्यवहार गर्दा ऊ लाजमर्दो भयो । उत्तैखेरि ऊ कुलेलम ठोक्यो । भाञ्जा साइनो लगाई आफ्नो घरमा राती वास बस्न आउने ती ठट्यौला पात्रहरूले आफू खेत गएकोबेला नाठो खेलाई बस्ने आफ्नी स्वास्नीको भ्रष्टचरित्रको सबुद सहित जानकारी दिएकाले घरपट्टिले तिनलाई घरबाट निकाली दिन्छ । अश्लील जस्तो लाग्ने यस प्रहसन नाटकमा भएका रत्यात्मक हाउभाउ र श्रृङ्गारिक वक्रोक्ति-श्लेष शब्द वाक्यद्वारा र अभिनयद्वारा उदेक हुने हास्यले यथेष्ट मनोरञ्जन गराउँछ त यसमा निहित चरित्र सुधारोन्मुख अझ भनौं समाज-सुधारोन्मुख तीव्र व्यङ्ग्यले सामाजिक मानिसहरूलाई सचेत र सतर्क पार्छ । दोस्रो प्रहसन नाटक **'च्वलय खुदां दां खुदां झिं निदां पायृछि'** (अर्थात् बाखीको ६ दाम र नगदै तिरेको ६ दाम समेत हिसाब गर्दा १२ दाम) हो । यसको विस्तृत पाठ **खेलुइता:** (अङ्क ८, ने.सं. ११०७, पृ. ३३-४१) मा प्रकाशित भएको छ । यसमा बाखीहरू (१२ दाम मोल पर्ने ठूली एक र ६ दाम मोल पर्ने सानी १) बेच्न बसिरहेकी एक सुन्दरी तर अशिक्षित, निरक्षर, सोझा सीधा निरीह तरुनी किसानीलाई बा:थ: किजा नामक ठट्यौला पात्रले बठ्याइँपूर्ण तर्क र हिसाबले अलमल्याई मोल तोल छिनफान गरी १२ दाम मोल पर्ने ठूली बाखी ६ दामले (अघि सानी बाखी 'किन्दा तिरेको छ दाम नगद र त्यही सानी बाखीको मोल बापतको ६ दाम जोड्दा १२ दाम' भन्ने हिसाबले) किनी लान्छ त्यस तरुनी स्त्रीको लोग्नेचाहींले त्यो कुरा थाहा पाएपछि रिसले चुर हुँदै खोज तलास गरी बा:थ: किजा लगायत तीनै ठट्यौला पात्रहरूसँग उसको मुठभेट र झगडा हुन्छ । तिनीहरूलाई आफ्नो

खास्टो ओढाई बाखी- धनीले साथ लिइकन फिराद गर्न श्रीकृष्णको दरबारमा जान्छन् । त्यहाँ कोतवालले आउनाको कारण सोधपुछ गरिरहेकै मौकामा ठट्यौला पात्रहरूले कोतवाललाई बाखी धनीले चालै नपाउने गरी सुटुक्क घुस दिन्छ । ठट्यौला पात्रहरूले कोतवाल समक्ष 'बाखीधनीले नै ठट्यौला पात्रहरूको खास्टो खोस्न आएको' उजुरी दिन्छ र घुस्याहा कोतवालले पनि चंखे ठट्यौला पात्रहरूको पक्षमा न्याय इन्साफ गर्छ । बाखीधनीले बाखी वापतको नपुग ६ दाम र खास्टो समेत गुमाउनु पर्ने हुन्छ । यो प्रहसन नाटक पनि दोहरो अर्थ लाग्ने शब्द र वाक्य-विन्यासयुक्त घतलाग्दा सम्वाद, रत्यात्मक श्रृङ्गारिक हास्य, तथा तत्कालीन कोतवाल जस्ता घुस्याहा पदाधिकारीको भ्रष्टाचारविरुद्ध व्यङ्ग्यप्रहार युक्त छ । यसको केही चर्चा सत्यमोहन जोशीको लेखमा पनि परेको छ (**मधुपर्क**, जेठ २०४८, पृ. ९-१०) । यस प्रहसन नाटकका घुस्याहा कोतवाल जस्ता घुस लिएर न्यायको अन्याय गर्ने गराउने अधिकारी र त्यस्ता अधिकारीको भ्रष्टाचार तथा बठ्याइँ गर्ने चंखे विपक्षीहरूका 'कानुनको सिकार ' हुनुपरेका निरीह निमुखा नागरिक वर्तमान कालमा पनि बिगिबिगि नहोलान् भन्न सकिन्न । यसरी यो प्रहसन नाटक अहिले पनि सान्दर्भिक नै देखिन्छ । **"कौला खिचा"** (**खेलु इता**:, अङ्क ६/ ने.सं. ११०५, पृ. ३१-४४) शीर्षकको यो प्रहसन नाटक ह्वाट्ट हेर्दा संस्कृत **पञ्चतन्त्रको** 'मित्र शर्मा र बाखोको कथा'मा आधारित जस्तो देखिए पनि यो नेपाल उपत्यकाको तत्कालीन स्थानीय यथार्थ स्वाभाविक समाज संस्कृति परिवेश झल्किने मनोविनोदपूर्ण स्वस्थ हास्य-व्यङ्ग्य सिर्जना हो भन्न सुहाउँछ । यसमा एक ब्राह्मणले आफ्नो जजमानबाट ग्रहशान्ति पूजा गराउँदा दान स्वरूप पाई डोऱ्याइल्याउँदै गरेको एक बोकालाई तीनै ठट्यौला पात्रहरूले कुकुर हो भनी भ्रम जालमा पारी ठगी लिन्छन् । तिनीहरूले भीमसेन-पूजा गरी सो बोका बलि चढाइवरी भोज खान्छन् र भोजको अन्त्यमा बोकाको 'सीका भू' प्रसाद ज्येष्ठताक्रमले थाप्ने कुरामा ती तीनैजना दाजुभाइ ठट्यौला पात्रहरू आफूमध्ये को जेठो भन्ने कुरामा झगडा गर्छन् । न्याय पाउन तिनीहरू श्रीकृष्णको दरवारमा फिराद गर्न जान्छन् । त्यहाँ पनि बा:थ: किजाको रुञ्चे अभिनय र सूर्य भगवान् उदय हुनासाथ आमाको गर्भबाट फुत्त जन्मेकोले जेठो भनी दाबी गर्ने गँदाजु, सूर्य भगवान् उदय भएको बेलामा त दुवै गोडामा छमछम बज्ने घुँघुरा लगाई टुकटुक हिँड्न सक्ने भइसकेकोले जेठो हुँ भन्ने दाबी गर्ने समां दाजुभन्दा पनि आफू नै जेठो हुँ भन्ने प्रमाणित गर्न बा:थ: किजाले सूर्य भगवान् नउदाएकै बेलामा घुँघुरा लगाई हिंड्न सक्ने भइसकेको आफ्नो नाति मरिसकेको सम्झँदा रोएको हुँ भनी स्पष्टीकरण दिई आफ्नो ज्येष्ठता प्रमाणित गरी न्याय इन्साफ आफ्नो पक्षमा लिई छाड्छ । (विस्तृत कुरा **मधुपर्क** २०४८ जेठ, पृ. ११ मा पनि हेर्नुस्) । यस प्रहसन नाटकमा तत्कालीन समाजका अशिक्षित, अज्ञानी, धर्मभीरु र अन्ध-विश्वासी यजमानहरू तथा पुर्ख्यौली पुरोहित्याइँ पेसा अन्धानुकरण मात्र गर्न जान्ने ब्राह्मणका गएगुज्रेको स्थितिप्रति उपहासपूर्ण व्यङ्ग्य प्रहार गरिएको बुझिन्छ । आ-आफ्नो ज्येष्ठता प्रमाणित गर्न खोज्ने ठट्यौला पात्रहरूका प्रतिस्पर्धात्मक संवाद घतलाग्दा हास्यका उदाहरण हुन् । **शिव पुराण** रुद्र संहितामा र **भागवत महापुराणमा** (तृतीय स्कन्ध अध्याय ९ र १२) वर्णित शिव-रुद्र, नारायण र ब्रह्मा क्रमश: एकपछि अर्को उत्पत्ति भएको भन्ने कथावस्तुको कति पनि प्रतिच्छाया नदेखिने गरी यो प्रहसन नाटक नेवार संस्कृति र मनोभावना बढी झल्कने गरी सिर्जना, रचना गरिएको प्रयास स्तुत्य छ । यस प्रहसनको पात्र बा:थ: किजाले दाजुहरूमध्ये आफू कान्छो भए पनि बठ्याइँ गरी उछिनेर ज्येष्ठताको सम्मान हात पारेको प्रसङ्गले एकातिर काम गरेर भन्दा बठ्याइँ कुराले योग्यता र साँच्चिकै उमेरको हिसाबले भनौं अथवा सेवा कालको हिसाबले जेठालाई उछिन्नेहरूप्रति यसमा व्यङ्ग्य लक्षित भएको बुझिन्छ । साथै, मात्र उमेरले ज्येष्ठता एवं सेवाकालले ज्येष्ठता भएर पुग्दैन बौद्धिक चातुर्य र तर्कसम्मत प्रमाण पेस गर्ने खुबी पनि हुनु पर्दोरहेछ भनी सचेत तुल्याएको ध्वनित हुन्छ ।

यस्तै यसको अर्को प्रहसन नाटक 'माक:सि मियेगु' (खेलुइता: अङ्क १०, ने.सं. ११०९, पृ. ५९-७३) मा खञ्चुवा बा:थ: किजालाई एउटा चील, एउटा काग पक्रेर ख्वाउँदा पनि ऊ नअघाएको हुँदा आफ्नी आमाको माक:सि भन्ने गहना (पाटनका किसानीहरूले कानमा लाउने) बेचेर खानू भनी गँदाजु र समां दाजुले अऱ्हाई पठाउँछन् । बा:थ: किजाले उल्टै आफ्ना दुवै दाजुहरू (गँदाजु र समांदाजु)लाई टाढैबाट उनीहरूको मञ्जुरी इशारा भाषाले लिइकन एक महाजनलाई बेचेर फरार हुन्छ । यस प्रहसन अंशले आफू मात्र खाऊँ सुख सुविधा भोगूं भन्ने आलस्य प्रवृत्तिका मानिसले सञ्चित धन र प्राकृतिक सम्पदा पनि सिध्याएर आफूलाई आश्रय दिने दाता पात्रलाई पनि बेच्न हिच्किचाउँदैन भन्ने चेतनाबोध गराई त्यस्ता तत्वप्रति व्यङ्ग्य प्रहार गरिएको छ । यस प्रहसनको अर्को अंशमा देखाइएको महाजनलाई दास नोकर स्वरूप बा:थ: किजाले बेचिएका गंदाजु र समां दाजु केही समयसम्म महाजनकहाँ बाध्य भई नोकरी गरेपछि महाजनले अऱ्हाएको भन्दा विपरीत र सर्वनाशी काम गरिकन ("कुति वा हुँ" भनी अऱ्हाउँदा धान कुट्ने 'कुती' भन्ने काष्ठ यन्त्रनै नदीमा फालेर आउने, अर्कोलाई "छ्यँ मिच्याक: हुँ" अर्थात् घरको चुल्होमा आगो बालेर खाना पकाऊ भनी अऱ्हाएकोमा घरमै आगो लगाई स्वाहा पार्ने) महाजनलाई दिक्क र हैरान पारेर उसकहाँबाट निष्कासित भई उम्कन्छन् । यस अंशको काकु वक्रोक्ति एवं श्लेष वक्रोक्ति अलंकारयुक्त सम्वादबाट उद्रेक हुने हास्य रसले दर्शकलाई धेरै मनोविनोद गराउँछ । यस्तै प्रकारको हास्यरसपूर्ण प्रहसन नाटकका दृश्यहरू 'खुसि छिकेगु' अर्थात् नदी पार लगाइदिने (खेलु इता:, अङ्क ११, ने.सं. १११०, पृ. ४३-५४), 'मिखा कां' अर्थात् आँखा अन्धो भए (खेलु इता:, अङ्क १३, ने.सं. १११२, पृ. २६-३२) र 'छ्यौं ध्वगी' (उसैमा अङ्क १२, ने.सं. ११११, पृ. ८१-८६) मा भने विशेष गरी श्रृङ्गारिक अर्थात् रत्यात्मक हास्यद्वारा मनोरञ्जन गराउँछ । स्मरण रहोस् 'मिखा कां', 'छ्यौं ध्वगी' र 'सति वनेगु' शीर्षकका प्रहसनहरू भने 'महामूर्ख', (उसैमा अङ्क ९, ने.सं. ११०८, पृ. १९-२६) शीर्षकको

प्रहसन नाटकमा ठट्यौला पात्रहरू गं दाजु, संमांदाजु र बाथ:किजाको सामु उभेर एक ब्राह्मणद्वारा "जो महामूर्ख ठहर्छ उसैलाई भाग्यमानी भएस्" भनी आशीर्वाद दिंदा उनीहरू आ-आफूलाई 'महामूर्ख' प्रमाणित गर्ने हेतुले प्रतिस्पर्द्धात्मक हिसाबले प्रस्तुत गरेका घटना दृश्य हुन् । 'महामूर्ख' शीर्षकको प्रहसन नाटकमा आफूले गतिलो राम्रो केही काम नगरिकन पनि मान्यजनबाट भाग्यमानी भएस् भन्ने आशिष अथवा समाजबाट आफ्नो गुणगान होओस् भन्ने महात्त्वाकांक्षी प्रवृत्ति भएका मानिसप्रति व्यङ्ग्य लक्षियत भएको बुझिन्छ । साथै, 'मिखा कां', 'छयौं ध्वगी' र 'सति वने' प्रहसनहरूमा भोग विलासी र स्त्र-लम्पट पुरुषहरूप्रति तीव्र व्यङ्ग्य प्रहार गर्नुको साथै त्यस्ता कुव्यसनबाट पर रहनु उत्तम छ भनी सजग तुल्याएको पनि ध्वनित हुन्छ । 'ख:सां च्य:, मखुसां च्य:' अर्थात् कुरा साँचो 'हो' भने पनि नोकर ठहरिने, 'होइन' भने पनि नोकर हुन बाध्य पर्ने (उसैमा, अङ्क १५, ने.सं. १११४, पृ. ४१-४९) प्रहसन नाटकमा गं दाजु, समादाजु र बा:थ: किजा तीनै जना ठट्यौला पात्रहरू धेरै वर्षपछि घुम्दै फिर्दै एकै ठाउँमा भेटेछन् र तिनीहरू आ-आफ्ना अद्‌भुत भन्दा अद्‌भुत अनुभव सुनाउने प्रतिस्पर्द्धा जस्तो गरेछन् । वक्ताले अनुभव सुनाएपछि 'यो कुरा होला कि नहोला ?' भनी सोध्दा 'यो त असम्भव कुरा हो, म त पत्याउँदिन' भन्ने व्यक्ति वक्ताको नोकर हुनुपर्ने शर्त राखेका थिए । त्यस प्रतिस्पर्द्धामा बा:थ: किजाले आफ्नो गफ हाँक्ने पालोमा आफ्नो सामुन्ने उपस्थित गंदाजु र समांदाजुतिर हेर्दै सुनाएको गफको अन्त्यमा भनेछन् - "ऊ पहिले ठूलो महाजन थियो । असामी उठाउन दुवै नोकर साथ लिई जाँदा अचानक आँधी हुरी चलेर उसका दुवै नोकर कहाँसम्म आँधीले उडाएर लगेछ । तिनीहरूलाई खोज्दै आएकोमा दैवको कृपाले ती दुवैजना मेरा नोकर अहिले मेरै सामुन्ने उपस्थित छन् । ती दुवै नोकर तिमीहरू नै हौ" भनी गंदाजु र समादाजुतिर हेरेर 'यो कुरा हो कि होइन' भनी बा:थ: किजाले सोध्दा ती दुवैले बाध्य भई आफ्नो हार स्वीकार्नु पर्‍यो । शर्त अनुसार 'नोकर होइनौं ?' भनेकाले ती दुवै जनालाई बा:थ: किजाले आफ्नो नोकर बनाउँछ । यस प्रहसनमा हास्य र अद्‌भुत रसको संमिश्रण छ ।

यसरी यी प्रहसन नाटकहरूमा रत्यात्मक शृङ्गारिक हास्य तथा सुधारोन्मुख नैतिक उपदेशात्मकतायुक्त व्यङ्ग्यका सङ्गम बराबर भेटिन्छ । श्लेष वक्रोक्ति र काकु वक्रोक्ति भएका शब्द एवं वाक्य संवादको चयन पनि प्रशंसनीय छन् । काल्पनिकतामा भन्दा मानवीय स्वभाव र प्रवृत्ति विशेषका विकृति दोष चित्रण कलामा जोड दिइएका देखिन्छन् ।

भक्तपुरका राजा रणजीत मल्लको (ने.सं. ८२३-८९१/वि.सं. १७६०-१८२८) शासनकालमा घटित दरबारी कलहको सिकार हुन बाध्य भएकी उनैकी जेठी रानी तथा कवयित्री वृद्धिलक्ष्मी देवीले ने.सं. ८५९-८६१/वि.सं. १७९६-१७९८ तिर रचिएका भक्ति गीति रचनाहरूमा यथाप्रसङ्ग अर्थपूर्ण व्यङ्ग्य उक्तिले स्थान पाएका छन् । ती रचनामा राजा रणजीत मल्ललाई लक्ष्य गरी 'गरुड गओम्हसेन मयात विवेक' (अर्थात् गरुड वाहनमा सवारहुने नारायणले विवेक पूर्वक रक्षा गरेनन्) र रणजीत मल्लकी प्रेयसीलाई लक्ष्य गरी 'धुओ साओ होने गथे, दु:खं बिसे हल अथे' (अर्थात् बघिनी र गाई एकैठाउँमा कसरी मिलेर बस्ने ? मलाई त्यस्तो दु:ख दिन थाले) भनी छेड हानेकी छिन् । राजा रणजीत मल्लले मन्त्री काजीहरूकासमेत राय लिइकन वृद्धिलक्ष्मी तर्फका राजकुमारलाई युवराज घोषित गरिसकेर पनि पछि प्रेयसीको दबाबमा परेर उनले सो घोषणा बदर गर्न लागेको र रणजीत मल्लकी ती प्रेयसीले वृद्धिलक्ष्मीलाई 'भक्तपुर दरबारभित्र रहनु पनि ज्यानको खतरा मोल्नु' जतिको संकटापन्न स्थिति सिर्जना गरेकी थिइन् । त्यही स्थितिमा उपर्युक्त उद्‌गार कवयित्रीका रचनामा अभिव्यक्त भएका हुन् ।

ने.सं. ८६४/वि.सं. १८०१ तिर राजा जयप्रकाश मल्लको शासन कालीन एक कवि धनन्त(धनवन्त)ले 'ॐ नमो बुद्धाय । लोकया चरित्र खं ल्हाय' शीर्षकको रचना गाईजात्रा उत्सवको अवसरमा गाउनलाई रचिएको बुझिन्छ । उक्त व्यङ्ग्य गीती रचनामा तत्कालीन नेपाल उपत्यकाका विभिन्न पेसामा लागेका सामाजिक मानिसहरूका जीवनमा देखा परिरहेका कज्याउन र नियन्त्रण गर्न कठिन एवं जटिल विकृति, दोष, त्रुटिहरू औंल्याई सम्बद्ध चरित्रदोष भएका पात्रहरू, जस्तो व्यापारिक कर्मी, मोही (किसान), ज्यामी, छिपा ( रञ्जितकार), सालमी (मानन्धर), चामल र च्यूराका बञ्जार, दूध बेच्ने कसाईनी, मासु बेच्ने कसाई, दिदीअजी (सुँडेनी) पुरोहित्याई गर्ने (ब्राह्मण, गुभाजु र कर्माचार्य) र ज्योतिषीमध्ये कसैलाई तीव्र व्यङ्ग्य प्रहार गरिएको छ, कसैका कुकृत्यको भर्त्सना गरिएको छ, कसैलाई कुकृत्यको भावी पापफल दर्शाई सम्झाउने बुझाउने यत्न गरिएको छ । अघिल्ला व्यङ्ग्य रचनामा भन्दा यसमा नैतिक, मानवीयता, धर्म-संस्कृति, कर्तव्याकर्तव्यको पक्ष लिई तत्कालीन समाजको सुधार गर्ने ध्येयले विस्तृत आलोचना गरिएको छ । ने.सं. ८६९/वि.सं. १८०६ मा रचिएको सिन्हाज्या लयबद्ध कथागीत 'संसारया कारण विघ्न फुतकाओ' मा (पुलांगु म्ये, ने.सं. १०८३ मा प्रकाशित, पृ. ५९-६३) ललितपुरका राजा राज्य प्रकाश मल्लका शासन कालीन (ने.सं. ८६५-८७८/वि.सं., १८०२-१८१५) एक स्थानीय कविले तत्कालीन एक तल्सिङले आफ्नै खेत कमाउने मोहीकी स्त्रीको रूप यौवनमा आसक्त भएर डर धम्की देखाईदिन दहाडै लसपस गरेको कार्यको पोल खोलिदिएको छ । ती स्त्री रोपाहारहरूलाई खाजा ख्वाउन खेतमा पुग्दा तिनको लोग्नेले अबेर आउनाको कारण सोध्दा तिनले "घरमा 'त्वायभत' अर्थात् मितज्यू आएकोले उसैलाई पाहुना सत्कार गर्न परेकोले आउन ढिलो भएको" भनी खेतमा सबैका सामुन्ने स्पष्टीकरण दिन्छिन् । यस स्पष्टीकरण उक्तिभित्र तलसिङको कुकृत्यप्रति व्यङ्ग्य ध्वनित भएको छ । स्वयं उनै राजा रणजीत मल्लले आफूलाई आफ्नै स्वजन परिवार र मन्त्री भारदार एवं मित छोराले धोका दिएका कारणले भक्तपुर राज्य पृथ्वीनारायण शाहले जितेपछि काशीवासका निम्ति आफ्नो जन्मभूमि एवं कर्मभूमि नेपाल देशबाट अन्तिम बिदा लिने क्रममा चन्द्रागिरि डाँडामा

पुग्दा रचेको "हाय हाय राम गथे मलुमने नेपाल" गीतमा उनले आफूलाई धोका दिनेहरूप्रति लक्ष्य गरी "पिरति यानाचोना दुरजनयाके छल" भनी व्यङ्ग्य पूर्ण उद्गारअभिव्यक्त गरिएको मर्मस्पर्शी छ ।

वि.सं. १८६२-१८६३ तिर रचिएका दुई भिन्दाभिन्दै ऐतिहासिक घटनाका विषयवस्तुका कथा गीतहरू "सितला माजु स्वहुने परजाया गथिन हवाल" (अर्थात् हेर्नुस् न सितलामाई प्रजाहरूलाई कस्तो हविगत परेको !) र "महारानी विजयालक्ष्मी विदेशन ध्यनके हल" (अर्थात् महारानी विजयालक्ष्मी - राजराजेश्वरी नामले परिचित-विदेशबाट ल्याइयो)मा पनि यथाप्रसङ्ग गम्भीर अर्थ गर्भित व्यङ्ग्यपूर्ण उद्गार अभिव्यक्त भएका छन् । उपर्युक्त पहिलो कथा गीतमा तत्कालीन नेपाल उपत्यकामा बिफर महामारी फैलिंदा श्री ५ स्वामी महाराजा रणबहादुर शाहले उक्त महामारी रोकथाम र औषध उपचारको बन्दोवस्त गराउने तथा दु:खित पीडित प्रजाहरूलाई सान्त्वना दिनु दिलाउनुको साटो त्यस बेलाका बिफर नआएका र बिफर आइराखेका बालबालिकाहरू अभिभावक सहित नेपाल उपत्यकाबाट पूर्वमा तामाकोशीसम्म पश्चिममा गण्डकीसम्म धपाइए । त्यसबाट राजभक्त एवं धर्मप्राण प्रजाहरूका हृदयमा ठूलो चोट पर्‍यो । त्यस कारुणिक घटनाका प्रत्यक्षदर्शी कविले ती निरीह निस्सहाय बालबालिका एवं पीडित अभिभावकहरूप्रति सहानुभूति दर्शाई त्यस घटनाका घटकहरूका अमानवीय दमन कुकृत्य प्रति तीव्र व्यङ्ग्य प्रहार गर्दै यसरी उद्गार पोखेका रहेछन्- "स्वामी जुजुया धर्म मदया कचि मचा वाके छोत ।" उपर्युक्त दोस्रो ऐतिहासिक कथा गीतको अन्त्यतिर अभिव्यक्त "काजि धाय भीमसेन थापा मन्त्री धाय भीमसेन थापा" भन्ने उद्गारमा व्याज-स्तुति अलंकारयुक्त व्यङ्ग्य ध्वनित हुन्छ । स्मरण रहोस् श्री ५ रणबहादुर शाहलाई शेरबहादुर शाहद्वारा हत्या गरिएको लगत्तै पछि त्यस बखत हेलम्बुमा निर्वासित जीवन धानिरहेकी श्री ५ रणवहादुर शाहका जेठी बडामहारानीलाई झिकाई सती जान बाध्य तुल्याइयो । तिनलाई अन्तिम इच्छानुसार राजकुमार श्री ५ गीर्वाण र राजकुमारी मैत्रासित भेट्नसमेत दिइएन । जनमानसले 'सतीको सराप' स्वरूप टिपिएका उपयुक्त उद्गार सम्बद्ध घटकहरूलाई लक्ष्य गरिएको व्यङ्ग्य हो ।

न्याय-धर्मी एवं स्वदेश र स्वदेशबन्धुका विषम दुर्गति टुलुटुलु हेर्न नसक्ने सम्वेदनशील कविले बेलाबखत रच्ने गरेका गीती भजनहरूमा समकालिक शासकहरूले गरेका शोषण दमन औंल्याउनुका साथै त्यस्ताहरू प्रति सावधान भइकन व्यङ्ग्यात्मक उद्गार पनि पोख्ने गर्थे । त्यस्ता कविहरू मध्येमा काठमाडौं लगन टोल निवासी स्व. ख. मानवहादुर जोशी (ने.सं ९६७-१०३७/वि.सं. १९०४-१९७४) पनि एक थिए । उनी मुख्यत: निर्गुण भक्त कवि थिए । उनले आफैंले नेपाली कागतको किताब जस्तो बनाई त्यसमा आफ्नै सुन्दर हस्ताक्षरमा सर्‍यौं गीत भजनहरू लेखेका ५ भागमा अभिलेख ग्रन्थहरू छोडेर गएका छन् । आजकल ती ग्रन्थ कोसित छन् पत्तो छैन । स्व. प्रेमवहादुर कंसाकारसित रहेको एक अभिलेख ग्रन्थबाट सारेर लिइराखेको दुई व्यङ्ग्य गीत पाइएको छ ।

यस्तै वर्ण्य विषयको उनको अर्को रचना 'सिन्हाज्या राग'मै रचिएको 'तव जल छे चोने जि मफु, जुजु मेले वने बीवो वचन्' शीर्षक वाक्य भएको चाहिं खेलु इता:, अंक १२, ने.सं. ११११ मा (पृ १-२) प्रकाशित भइसकेकोछ । माथि उद्धृत रचनाभन्दा 'तवजल छे चोने जि मफु...' रचनालाई कविले केही बढी छायावादी शैलीमा अभिव्यक्त गर्न खोजेएको देखिन्छ । उनका रचनामा तत्कालीन राणा प्रधान मन्त्री वीर शमसेरको पालामा भएका गरेका देश र प्रजालाई हित गर्ने नाममा देश र प्रजालाई दरिद्र, अशिक्षित, वेकारी शोषित तुल्याइएकोको सजीव व्यङ्ग्य चित्र अघि सारिएको छ । यी दुवै रचनाका व्यङ्ग्य चित्रण माथि उल्लेख भइसकेको (पृ.१०-११) ने.सं. ८६४ अर्थात् वि.सं. १८०१ को 'कथा ल्हाय' शीर्षकको रचनाको भन्दा पनि विस्तृत र बहुपक्षीय देखिन्छ । कविले सम्भवत: यो व्यङ्ग्य चित्रण पहिले छायावादी शैलीमा प्रस्तुत गर्न ठूलो घरपरिवारकी बुहारीको भाषा बोली पारी 'तव जल...' तत्कालीन राणाशासकबाट देशका जनताले भोग्न परेका बहुविध समस्या, पीर, झोंझ-झमेला, शोषण, दमन, छल-प्रपञ्च, डर-त्रास इत्यादिका यथार्थ चित्रण गरेको प्रतीत हुन्छ ।

अज्ञात कविबाट रचिएका अरू दुई फुटकर व्यङ्ग्य गीती रचनाहरू "कर्नि मभिं मिसा ओयि न्ह्याथें सना जुयि" अर्थात् खराब बानी बेहोरकी स्त्री बुहारी भई घरमा आइन् भने मनपरी गर्छिन् (पुलांगु म्ये, पृ. ६७) र 'नसा तोसा दतले मिसा यां थ्यां मस्यू पासा' अर्थात् खान लाउन मात्र पाएमा स्त्री दुलही मात्तिन्छे (उसैमा, पृ. ६८-७०) पनि प्रकाशित भएका छन् । विशेषत: दुलहीको चरित्र-दोषका आधारमा वर्गीकरण गरी त्यस्ता झगडिया, ठग, अधर्मी, कुलक्ष्नी, निर्बुद्धि इत्यादि रूपका व्यवहारका स्त्री बधूलाई व्याजस्तुति अलंकारयुक्त शैलीमा व्यङ्ग्य प्रहार गरिएका छन् ।

यसरी अध्ययन गर्दा नेपालभाषाका हास्य-व्यङ्ग्य विधाका गीती रचनाहरू र कथा गीत रचनाहरूमा व्यक्ति विशेष, वर्ग विशेष, जात जाति विशेषको चरित्र हत्या गर्ने ध्येय र प्रयास रत्तिभर पनि दृष्टिगोचर भएको छैन । प्रायश: हास्य-व्यङ्ग्य चरित्र, समाज, र देशकै सुधार उद्देश्य भएका छन् । नेपालभाषा हास्य व्यङ्ग्य विधाका रचनामा हास्य रस, श्रृङ्गाररस, र केही अंशमा अद्भुत रसको संमिश्रण पाइने हुनाले हास्य र व्यङ्ग्य सन्तुलित रूपमै अन्तर्निहित भएका हुन्छन् । त्यस बेलाका हास्य व्यङ्ग्य विधामा खास गरी व्याजस्तुति, व्याज-निन्दा, केही अतिशयोक्ति, अलंकार स्वाभाविक रूपले प्रयुक्त भएका देखिन्छन् । हास्य व्यङ्ग्यको मूल ध्येय सुधार हुँदा नेपालभाषाका हास्य व्यङ्ग्य विधाका गीती रचनामा नैतिक नैतिकता, दर्शन, धर्म, संस्कृति, सच्चरित्रता बारेका उपदेश सन्देश पनि अभिन्न रूपमा समावेश गरिएका हुन्छन् । हास्य व्यङ्ग्यका कविहरूले देश, समाज र जन-मानसलाई युगानुकूल आचरण, चरित्र, नैतिकता, स्वभाव आदि सद्गुणद्वारा आभूषित पारी अगि बढ्न दिन चाहेका बोध हुन्छन् ।

*- महालक्ष्मी चोक, चक्रपथ, ललितपुर*